# ➪दाङ्ग अस्पताल विकास समिति (गठन) आदेश, २०५९

राजपत्रमा प्रकाशित मिति

२०५९।८।२

विकास समिति ऐन, २०१३ को दफा ३ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायको आदेश जारी गरेको छ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस आदेशको नाम "दाङ्ग अस्पताल विकास समिति (गठन) आदेश, २०५९" रहेको छ ।

(२) यो आदेश तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस आदेशमा :

(क) "अस्पताल" भन्नाले दाङ्ग जिल्ला अस्पताल सम्झनु पर्छ ।

(ख) "समिति" भन्नाले दफा ३ बमोजिम गठित जिल्ला अस्पताल विकास समिति सम्झनु पर्छ ।

३. **समितिको गठन** : (१) जिल्ला अस्पताल विकास समिति नामको एक समिति गठन गरिएको छ ।

(२) उपदफा (१) बमोजिमको समितिमा देहायका सदस्यहरू रहनेछन :-

(क) नेपाल सरकारबाट मनोनीत व्यक्ति — अध्यक्ष

(ख) अस्पताल रहेको क्षेत्रको सम्बन्धित नगरपालिका वा गाउँ विकास समितिको प्रमुख वा अध्यक्ष — सदस्य

(ग) जिल्ला विकास समितिको प्रतिनिधि — सदस्य

(घ) जिल्ला प्रशासन कार्यालयका प्रतिनिधि अधिकृत स्तर — सदस्य

➪ राप्ती उपक्षेत्रीय अस्पताल विकास समिति (गठन) आदेश, २०६८ द्वारा यो गठन आदेश खारेज गरिएको ।

| | | |
|---|---|---|
| (ङ) | उद्योग वाणिज्य संघको सभापति | सदस्य |
| (च) | जिल्ला रेडक्रस सोसाईटिको अध्यक्ष | सदस्य |
| (छ) | अस्पताल रहेको क्षेत्रको सम्बन्धित वडाका महिला प्रतिनिधि | सदस्य |
| (ज) | स्वास्थ्य सेवामा संलग्न महिलामध्ये समितिले तोकेको व्यक्ति | सदस्य |
| (झ) | अस्पतालको मेडिकल सुपरिन्टेन्डेन्ट | सदस्य सचिव |

(३) उपदफा २ को खण्ड (क) र (ज) बमोजिमका पदाधिकारीहरूको पदावधि दुई वर्षको हुनेछ ।

(४) नेपाल सरकारले आवश्यक ठानेमा नेपाल राजपत्रमा सूचना प्रकाशन गरी समितिको सदस्यहरूमा थपघट वा हेरफेर गर्न सक्नेछ ।

(५) समितिले आवश्यक देखेमा नेपाल सरकारको कुनै अधिकृत वा अन्य कुनै विशेषज्ञलाई समितिको बैठकमा पर्यवेक्षकको रूपमा उपस्थित हुन आमन्त्रण गर्न सक्नेछ ।

४. **समितिको काम, कर्तव्य र अधिकार** : समितिको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ ।

(क) अस्पतालको व्यवस्थापन र संचालन गर्ने,

(ख) अस्पताल व्यवस्थापनको लागि दीर्घकालीन तथा अल्पकालीन योजना तर्जुमा गर्ने गराउने,

(ग) अस्पताल व्यवस्थान र संचालनको लागि आवश्यक साधन र स्रोत जुटाउने,

(घ) अस्पतालको बजेट स्वीकृत गर्ने,

(ङ) अस्पतालको सेवा शुल्क निर्धारण गर्ने,

(च) अस्पतालको भौतिक सम्पत्तिको संरक्षण तथा मर्मत सम्भार गर्ने,

(छ) अस्पतालको वार्षिक प्रतिवेदन नेपाल सरकार समक्ष पेश गर्ने,

(ज) उपरोक्त कार्य कार्यान्वयनको लागि आवश्यक अन्य कार्यहरू गर्ने ।

५. **समितिको बैठक र निर्णय** : (१) समितिको बैठक समितिको अध्यक्षले तोके बमोजिम हुनेछ ।

(२) समितिको एक तिहाई सदस्यहरूले बैठकको लागि लिखित माग गरेमा समितिको सदस्य-सचिवले समितिको अध्यक्षलाई जानकारी दिई बैठक बोलाउनु पर्नेछ ।

(३) समितिको अध्यक्षको पद रिक्त रहेको अवस्थामा वा अध्यक्षको अनुपस्थितिमा समितिको सदस्य-सचिवले समितिको बैठक आवश्यकता अनुसार बोलाउन सक्नेछ ।

(४) समितिको कूल सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा समितिको बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(५) समितिको बैठकको अध्यक्षता समितिको अध्यक्षले गर्नेछ र निजको अनुपस्थितिमा समितिको सदस्यहरूले आफूहरूमध्येबाट छानेका व्यक्तिले समितिको बैठकको अध्यक्षता गर्नेछ ।

(६) समितिको बैठकमा बहुमतको राय मान्य हुनेछ । र मत बराबर भएमा बैठकको अध्यक्षता गर्ने व्यक्तिले निर्णायक मत दिनेछ ।

(७) समितिको निर्णय समितिको सदस्य-सचिवद्वारा प्रमाणित गरिनेछ ।

(८) समितिको बैठक वर्षमा कम्तीमा चार महिनामा एक पटक बस्नु पर्नेछ ।

(९) समितिको बैठकमा अपनाईने अन्य कार्यविधि समिति आफैले निर्धारण गर्न सकिनेछ ।

६. **समितिको कोष** : (१) समितिको आफ्नो एउटा छुट्टै कोष हुनेछ ।

(२) समितिको कोषमा देहाय बमोजिमका रकमहरू रहनेछन :-

(क) नेपाल सरकारबाट अस्पताल संचालनको लागि प्राप्त तलब भत्ता वा अनुदानको रकम,

(ख) अस्पतालको सेवा प्रदान गरे बापत प्राप्त रकम,

(ग) अन्य दातृ संस्था वा दाताहरूबाट प्राप्त हुने रकम,

(घ) अन्य स्रोतबाट प्राप्त रकम ।

(३) समितिको सम्पूर्ण खर्च उपदफा (१) बमोजिमको कोषबाट व्यहोरिनेछ ।

(४) समितिको नाममा कुनै वाणिज्य बैंकमा खाता खोली कोषको संचालन गरिनेछ ।

(५) समितिको कोषको संचालन अस्पतालका मेडिकल सुपरिन्टेन्डेन्ट र लेखा प्रमुखको संयुक्त दस्तखतबाट हुनेछ ।

(६) नेपाल सरकार, विदेशी सरकार वा अन्तर्राष्ट्रिय संघ संस्थाबाट जुन कार्यक्रमका लागि रकम प्राप्त भएकोछ सो रकम सोही कार्यक्रममा खर्च गर्नु पर्नेछ ।

७. **लेखापरीक्षण** : (१) समितिको आय व्ययको लेखा नेपाल सरकारले अपनाएको तरिका बमोजिम राखिनेछ ।

(२) समितिको लेखापीरक्षण प्रचलित कानुन बमोजिम हुनेछ ।

(३) नेपाल सरकारले चाहेमा जुनसुकै बखत समितिको हिसाब किताब जाँच्न वा जचाउन सक्नेछ ।

८. **कर्मचारी सम्बन्धी व्यवस्था** : समितिमा आवश्यकता अनुसार कर्मचारी नियुक्त हुन सक्नेछन् र निजहरूको सेवा र शर्त समितिले निर्धारण गरिदिए बमोजिम हुनेछ ।

९. **अधिकार प्रत्यायोजन** : समितिले आवश्यकता अनुसार आफ्नो अधिकार समितिको कुनै सदस्य वा सदस्य-सचिवलाई प्रत्यायोजन गर्न सक्नेछ ।

१०. **नियम बनाउन सक्ने** : समितिले आफ्नो कार्य संचालनका लागि आवश्यक नियम बनाउन सक्नेछ र त्यस्तो नियम नेपाल सरकारबाट स्वीकृत भएपछि लागू हुनेछ ।

११. **नेपाल सरकारसँग सम्पर्क** : समितिले नेपाल सरकारसँग सम्पर्क राख्दा स्वास्थ्य मन्त्रालय मार्फत सम्पर्क राख्नु पर्नेछ ।

१२. **निर्देशन दिने** : नेपाल सरकारले समितिलाई आवश्यक निर्देशन दिन सक्नेछ र यसरी दिएका निर्देशन पालना गर्नु समितिको कर्तव्य हुनेछ ।